# *दक्षिण एसियाली क्षेत्रीय सहयोग संगठनको बडापत्र

**हामी बङ्गलादेश, भूटान, भारत, माल्दिभ्स, नेपाल, पाकिस्तान र श्रीलङ्काका राष्ट्राध्यक्ष तथा सरकार-प्रमुखहरू ।**

१. संयुक्त राष्ट्र संघको वडापत्र तथा असंलग्नताका सिद्धान्तहरू, खासगरी सार्वभौमिक समानता, प्रादेशिक अखण्डता, राष्ट्रिय स्वतन्त्रता, शक्तिको अप्रयोग, अन्य राष्ट्रको आन्तरिक मामिलाहरूमा अहस्तक्षेप र सबै विवादहरूको शान्तिपूर्ण समाधान जस्ता गर्ने सिद्धान्तहरूको सम्मान र पूर्ण परिपालनाद्वारा यस क्षेत्रमा शान्ति, स्थिरता, मैत्री र प्रगति प्रवर्द्धन गर्ने आकांक्षा राखी,

२. पारस्परिक अन्तरनिर्भरता बढीरहेको विश्वमा, इतिहास र संस्कृतिबाट आपसमा बाधिएका सदस्य राष्ट्रहरू बीच पारस्परिक समझदारी, असल छिमेकी सम्बन्ध र सार्थक सहयोगको सम्बर्द्धन गर्नाले नै दक्षिण एसियाली क्षेत्रमा शान्ति, स्वयत्ततााम सामाजिक न्याय र आर्थिक संवृद्धिका लक्ष्य सर्वोत्तम रूपमा प्राप्त हुने कुरा बोध गरी,

* दक्षिण एसियाली क्षेत्रीय सहयोग संगठनको बडापत्रको प्रस्तुत नेपाली अनुवाद लेखकको आफ्नो अनुवाद हो, प्रामाणिक पाठ (Authentic Text) हुनेछ ।

३. दक्षिण एसियाका जनताहरूको साझा समस्या, हित र आकांक्षा तथा उनीहरूका आ-आफ्ना राजनीतिक र आर्थिक प्रणालीहरू एवं सांस्कृतिक परम्परा अन्तर्गत संयुक्त कारवाही र प्रवर्धित सहयोगको आवश्यकताप्रति सचेत रही,

४. यस क्षेत्रका जनताको कल्याण सम्बर्द्धन गर्न र तिनीहरूको जीवनस्तर विकास गर्नका लागि दक्षिण एसियाका मुलुकहरू बीचको क्षेत्रीय सहयोग परस्पर लाभदायी, वाञ्छनीय र आवश्यक भएको कुरामा विश्वस्त रही,

५. दक्षिण एसियाका मुलुकहरू बीचको आर्थिक, सामाजिक तथा प्राविधिक सहयोगले राष्ट्रिय र सामूहिक आत्मनिर्भरतामा उल्लेखनीय योगदान पुऱ्याउने कुरामा विश्वस्त रही,

६. यस क्षेत्रका मुलुकहरू बीच विस्तारित सहयोग, सम्पर्क र आदान-प्रदानले यी मुलुकमा जनता बीच मित्रता र समझदारी अभिवृद्धि गर्नमा योगदान पुऱ्याउने कुरा महसुस गरी,

७. अगस्त २, सन् १९८३ मा यी परराष्ट्र मन्त्रीहरूद्वारा नयाँ दिल्लीमा हस्ताक्षर गरिएको घोषणापत्रको संस्माज गर्दै तथा क्षेत्रीय सहयोगमा हासिल भएको प्रगतिलाई ध्यानमा राख्दै,

८. यस्तो सहयोगलाई संस्थागत ढाँचामा विकसित गर्ने तिनीहरूको दृढताको पुनः पुष्टि गर्दै,

**निम्नलिखित उद्देश्य, सिद्धान्त तथा संस्थागत एवं वित्तिय प्रवन्ध भएको "दक्षिण एसियाली क्षेत्रीय सहयोग संगठन" र नामक यसपछि "संगठन" भनी उल्लेख गरिएको एक संगठन स्थापना गर्न स्वीकार गर्दछौ :**

## धारा-१

## उद्देश्य

**संगठनका निम्नलिखित उद्देश्य हुनेछन् :**

(क) दक्षिण एसियाका जनताको कल्याण अभिवृद्धि गर्नु र तिनीहरूको जीवनस्तरमा सुधार गर्नु,

(ख) यस क्षेत्रमा आर्थिक उत्थान, सामाजिक प्रगति तथा सांस्कृतिक विकासको गति बढाउनु र सबै व्यक्तिहरूलाई सम्मानपूर्वक जीवनयापन गर्ने तथा आफ्नो पूर्ण क्षमताको उपयोग गर्ने अवसर प्रदान गर्नु,

(ग) दक्षिण एसियाका मुलुकहरू बीच सामूहिक आत्मनिर्भरता बढाउनु र सुदृढ गर्नु,

(घ) पारस्परिक विश्वास र समझदारी बढाउन तथा एक-अर्काका समस्याहरू बुझ्नमा योगदान पुऱ्याउनु,

(ङ) आर्थिक, सामाजिक, सांस्कृतिक, प्राविधिक तथा वैज्ञनिक क्षेत्रहरूमा सक्रिय सहयोग र पारस्परिक सहकार्य अभिवृद्धि गर्नु,

(च) अन्य विकासोन्मुख राष्ट्रहरुसँग सहयोग बढाउनु,

(छ) साझा हितका विषयमा अन्तराष्ट्रिय मञ्चहरूमा आपसी सहयोग सुदृढ पार्नु, र

(ज) समान उद्देश्य र लक्षय भएका अन्तराष्ट्रिय संगठनहरूसँग सहयोग गर्नु।

**धारा-२**

**सिद्धान्तहरू**

१. सङ्गठनको ढाँचा अन्तर्गतको सहयोग सार्वभौमिक समानता, प्रादेशिक अखण्डता, राजनीतिक स्वतन्त्रता, अन्य राष्ट्रको आन्तरिक मामिलाहरूमा अहस्तक्षेप र पारस्परिक लाभका सिद्धान्तहरूको सम्मानमा आधारित हुनेछ ।

२. यस्तो सहयोग द्विपक्षीय र बहुपक्षीय सहयोगको प्रतिस्थापन नभई तिनको परिपूरक हुनेछ ।

३. यस्तो सहयोग द्विपक्षीय र बहुपक्षीय दायित्वहरूसँग असङ्गत हुने छैन ।

**धारा-३**

**राष्ट्राध्यक्ष तथा सरकार-प्रमुखहरूको बैठक**

राष्ट्राध्यक्ष तथा सरकार-प्रमुखहरूले वर्षको एक पटक वा सदस्य-राष्ट्रहरूद्वारा आवश्यक ठानिएमा, बढी पटक बैठक गर्नेछन् ।

### धारा-४

### मन्त्री परिषद्

१. निम्नलिखित कार्यहरू गर्नका लागि सदस्य-राष्ट्रका परराष्ट्र मन्त्रिहरू रहेको एक मन्त्री परिषद्को स्थापना गरिनेछ :

(क) संगठनका नीतिहरूको तर्जुमा गर्न,

(ख) संगठन अन्तर्गत सहयोगको प्रगतिको समीक्षा गर्न,

(ग) सहयोगका नयाँ क्षेत्रहरू बारे निर्णय लिन,

(घ) आवश्यक ठानिए अनुसार संगठन अन्तर्गत थप संयत्र स्थापना गर्न ; र

(ङ) संगठनको सामान्य हितका अन्य विषयहरूमा निर्णय लिन ।

२. मन्त्री परिषद्को बैठक वर्षमा दुई पटक बस्नेछ । सदस्य-राष्ट्रहरू बीचको सहमतिबाट परिषद्को असाधारण बैठक बस्न सक्नेछ ।

### धारा-५

### स्थायी समिति

१. विदेश सचिवहरू रहेको स्थायी समितिका निम्नलिखित कार्यहरू हुनेछन्:

(क) सहयोगको कार्यक्रमको सम्रग सुपरिवेक्षण र समन्वय गर्नु;

(ख) आयोजना र कार्यक्रमहरू तथा तिनको वित्तिय व्यवस्थाको स्वरूप स्वीकृत गर्नु;

(ग) सहयोगका क्षेत्रहरू बीच प्राथमिकता-क्रम निर्धारित गर्नु;

(घ) क्षेत्रीय र बाह्य स्रोतको परिचालन गर्नु;

(ङ) उपयुक्त अध्ययनको आधारमा सहयोगका नयाँ क्षेत्रहरू पहिल्याउनु ।

२. स्थायी समितिको बैठक आवश्यक ठानिएजति पटक बस्नेछ ।

३. स्थायी समितिले आफ्ना आवधिक प्रतिवेदनहरू मन्त्री परिषद्मा बुझाउनेछ र नीतिगत विषयहरूमा निर्णयका लागि आवश्यक भएमा पनि यस समक्ष पेश गर्नेछ ।

**धारा-६**

**प्राविधिक समितिहरू**

१. सदस्य-राष्ट्रका प्रतिनिधिहरू रहने प्राविधिक समितिहरू सहयोगका आ-आफ्ना क्षेत्रहरूमा कार्यक्रमहरूको कार्यान्वयन, समन्वय एवं सुपर्यवेक्षणका लागि जिम्मेवार हुनेछन् ।

२. प्राविधिक समितिको कार्य विवरण देहाय बमोजिम हुनेछः

(क) स्वीकृत क्षेत्रहरूमा क्षेत्रीय सहयोगको र सम्भाव्यता र कार्य क्षेत्र निर्धारण गर्नु;

(ख) कार्यक्रमहरूको तर्जुमा र आयोजनाहरू तैयार गर्नु;

(ग) सहयोगको क्षेत्र अन्तर्गतका कार्यक्रमहरूको वित्तीय व्यवस्था निर्धारण गर्नु;

(घ) लागतको बाँड-फाडँको सम्बन्धमा सिफारिशहरू तर्जुमा गर्नु;

(ङ) सहयोगको क्षेत्र अन्तर्गतका कार्यक्रमहरूको कार्यान्वयन र समन्वय गर्नु; र

(च) कार्यान्वयनमा भएको प्रगतिको सुपरिवेक्षण गर्नु ।

३. प्राविधिक समितिहरूले आवधिक प्रतिवेदनहरू स्थायी समिति समक्ष पेश गर्ने छन् ।

४. प्राविधिक समितिहरूको अध्यक्षता सामान्यतः प्रत्येक दुई वर्षमा वर्णानुक्रम अनुसार सदस्य-राष्ट्रहरू बीच चक्रावर्तित भइरहनेछ ।

५. आवश्यक ठानिएका प्राविधिक समितिहरूले अन्य कुराका अतिरिक्त निम्नलिखित संयन्त्र तथा कार्य-रूपहरूको प्रयोग गर्न सक्नेछन् :

(क) राष्ट्रिय प्राविधिक संस्थाका प्रमुखहरूको बैठक;

(ख) विशिष्ट क्षेत्रका विशेषज्ञहरूको बैठक; र

(ग) क्षेत्रमा मान्यताप्राप्त अत्युत्तम केन्द्रहरू बीच सम्पर्क ।

## धारा-७

## कार्यान्वयन समितिहरू

स्थायी समितिले दुईभन्दा बढी तर सबै सदस्य-राष्ट्रहरू संलग्न नहुने गरी आयोजनाहरूको कार्यान्वयनसँग सम्बन्धित सदस्य-राष्ट्रहरू रहेको कार्यान्वयन समितिहरूको स्थापना गर्न सक्नेछ ।

## धारा-८

## सचिवालय

संगठनको एक सचिवालय रहनेछ ।

## धारा-९

## वित्तीय व्यवस्था

१. संगठनका गतिविधिहरूको वित्तपोषणको लागि प्रत्येक सदस्य-राष्ट्रको योगदान स्वैच्छिक हुनेछ ।

२. आफूले प्रस्तावित गरेका कार्यक्रमहरूको कार्यान्वयनको लागतको बाँड-फाँडको लागि प्रत्येक प्राविधिक समितिले सुझाव प्रस्तुत गर्नेछ ।

३. संगठनका गतिविधिहरूको आर्थिक पोषणका लागि क्षेत्रभित्रबाट पर्याप्त वित्तिय स्रोत परिचालन गर्न नसकिएमा स्थायी समितिद्वारा वा त्यसको स्वीकृति लिई उपयुक्त स्रोतहरूबाट बाह्य वित्तपोषण परिचालन गर्न सकिनेछ ।

## धारा-१०

### सामान्य व्यवस्था

१. सबै तहका निर्णयहरू सर्वसम्मतिको आधारमा गरिने छन् ।

२. द्विपक्षीय र विवादास्पद विषयहरू छलफलबाट बाहिर राखिने छन् ।

**जसको प्रमाणस्वरूप हामीले यसमा हस्ताक्षर गरेका र छाप लगाएका छौं ।** उन्नाइस सय पचासी सालको डिसेम्बर महिनाको यस आठौं दिनमा **बङ्गलादेश, ढाकामा लेखबद्ध गरियो ।**